卐 श्रीमते रामानुजाय नमः 卐



# अष्टश्लोकी



जीयर कुटी

**श्रीमद्रामानुज वेदविद्याश्रम**

गैंड़ाकोट, नवलपरासी

।। श्रीमते रामानुजाय नमः ।।



# अष्टश्लोकी

## (भाषानुवाद सहित)

प्रकाशक :-

**श्री देवराजाचार्य जीयर स्वामी**

भाषानुवाद :-

**चतुर्भुज अधिकारी**

(साहित्य वेदान्ताचार्य)

मकर संक्रान्ति २०५८ १०००/प्रति

श्री:

॥ श्रीमते रामानुजाय नमः ॥

**श्रीभाष्यकार वरयोगिपदारविन्द-**
**प्रेमाम्बुराशि गगनाद्रि मुनीन्द्र भक्तम् ।**
**वेदान्त युग्म सुख बोधन संप्रवीणम्-**
**रामानुजं यतिवरं गुरुमाश्रयामः ॥**

अखिलकोटि ब्रह्माण्ड नायक श्रीहरिले बद्ध जीवात्मा हरूको उद्धार का निमित्त निर्हैतु की कृपा कटाक्ष को परिणाम स्वरूप रहस्यत्रय को उपदेश गरि बक्सियो। रहस्यत्रय भन्नाले मूलमंत्र, द्वयमंत्र र चरम श्लोक को रहस्यार्थ लाइ भनिन्छ। भगवद्विषय, श्रीवचनभूषण, मुमुक्षुप्पड़ि आदि ग्रन्थहरू मन्त्रत्रय को विशद व्याख्यान स्वरूप भएका हुनाले विशिष्टाद्वैत वेदान्त मा रहस्य वेदान्त प्रतिपादन गर्नेवाला प्रमुख ग्रन्थ रत्न का रूप मा ग्रहण गरिन्छन्। रहस्यमय मन्त्रार्थ प्रतिपादन का निमित्त श्रीपराशर भट्ट स्वामीज्यू महाराजले सर्वप्रथम श्लोक बद्ध रूपमा रचना गरिबक्सिए को प्रकृत स्तोत्र अष्ट श्लोकी का नामले प्रसिद्ध छ। आठश्लोक हरूमध्ये प्रथम चार श्लोक मा मूलमंत्रको अर्थ, पाँचौ र छैठौं श्लोक मा द्वयमंत्र को अर्थ र सातौं एवं आठौं श्लोक मा चरम श्लोक को अर्थ वर्णन गरिएको छ।



मन्त्रार्थ को वर्णन भएको हुनाले श्रीवैश्णव हरू लाइ अत्यन्त उपयोगी भयेको प्रस्तुत अष्ट श्लोकी को प्रकाशन श्रीदेवराजाचार्य जीयर स्वामीज्यू महाराजले स्वकीय द्रव्य विनियोग द्वारा गरिबक्सिएको छ। अष्ट श्लोकी को पदार्थ तथा तात्पर्यार्थ वि० सं० २०१९ मा रामदयाल सोमानी द्वारा प्रकाशित सिकन्दराबाद निवासी परम भागवत श्रीकृष्ण दासजी अप्पय्याले गर्नु भयेका हिन्दी अनुवाद को नेपाली भाषा प्रायः जस्ता को त्यस्तै रूपान्तर गरिएको छ।

रहस्यत्रय को अनुसन्धान न गरीकन प्रपन्नता को आधान नैं हुन न सक्ने हुनाले मन्त्रार्थ को अनुसन्धान कासार्थ अष्ट श्लोकी को पारायण गर्दै रहस्यत्रय को भावलाई हृदयंगम गरी यावज्जीवन अपरिहार्यरूपमा अनुसन्धानात्मक रूपमा स्वीकार गर्न भगवद् भक्त श्री वैष्णव हरु समक्ष अनुरोध गर्दछु।

मकर संक्रान्ति
२०५८
२९/५ रंगपथ
हेटौंड़ा

श्रीवैष्णवानुचर
**चतुर्भुज अधिकारी**
नेपाली मन्दिर
अयोध्या

॥ श्रीश्रियैनमः ॥

॥ श्रीमते रामानुजाय नमः ॥

अथ

# अष्टश्लोकी

( १ )

अकारार्थो विष्णुर्जगदुदयरक्षाप्रलयकृत्
मकारार्थो जीवस्तदुपकरणं वैष्णवमिदम् ।
उकारोऽनन्यार्हं नियमयति संबन्धमनयो-
स्त्रयीसारस्त्र्यात्मा प्रणव इममर्थं समदिशत् ॥

( २ )

मन्त्रब्रह्मणि मध्यमेन नमसा पुंसः स्वरूपं गति-
र्गम्यं शिक्षितमीक्षितेन पुरतः पश्चादपि स्थानतः ।
स्वातन्त्र्यं निजरक्षणं समुचिता वृत्तिश्च नान्योचिता
तस्यैवेति हरेर्विविच्य कथितं स्वस्यापि नार्हं ततः ॥



( ३ )

अकारार्थायैव स्वमहमथ मह्यं न निवहाः
नराणां नित्यानामयनमिति नारायणपदम् ।
यमाहास्मै कालं सकलमपि सर्वत्र सकला-
स्ववस्थास्वाविस्स्युः मम सहजकैङ्कर्यविधयः ॥

( ४ )

देहासक्तात्मबुद्धिर्यदि भवति पदं साधु विद्यात्तृतीयं
स्वातंत्र्यांधो यदिस्यात्प्रथममितरशेषत्वधीश्चेद् द्वितीयम्
आत्मत्राणोन्मुखश्चेन्नमइतिचपदंबान्धवाभासलोलः
शब्दं नारायणाख्यं विषयचपलधीश्चेच्चतुर्थी प्रपन्नः ॥

( ५ )

नेतृत्वं नित्ययोगं समुचितगुणजातं तनुख्यापनं चो-
पायंकर्तव्यभागं त्वथ मिथुनपरं प्राप्यमेवं प्रसिद्धम् ।
स्वामित्वं प्रार्थनां च प्रबलतरविरोधिप्रहाणं दशैतान्
मन्तारं त्रायते चेत्यधिगतनिगमःषट्पदोऽयं द्विखण्डः ॥

( ६ )

ईशानां जगतामधीशदयितां नित्यानपायां श्रियं
संश्रित्याश्रयणोचिताखिलगुणस्याङ्घ्री हरेराश्रये ।
इष्टोपायतया श्रिया च सहितायात्मेश्वरायार्थये
कर्तुं दास्यमशेषमप्रतिहतं नित्यं त्वहं निर्ममः ॥

( ७ )

मत्प्राप्त्यर्थतया मयोक्तमखिलं संत्यज्य धर्मं पुन–
र्मामेकं मदवाप्तये शरणमित्यार्तोऽवसायं कुरु ।
त्वामेवं व्यवसाययुक्तमखिलज्ञानादिपूर्णो ह्यहं
मत्प्राप्तिप्रतिबन्धकैर्विरहितं कुर्यां शुचं मा कृथाः ॥

( ८ )

निश्चित्य त्वदधीनतां मयि सदा कर्माद्युपायान् हरेः
कर्तुं त्यक्तुमपि प्रपत्तुमनलं सीदामि दुःखाकुलः ।
एतज्ज्ञानमुपेयुषो मम पुनः सर्वापराधक्षयं
कर्तासीति दृढोऽस्मि ते तु चरमं वाक्यं स्मरन् सारथेः

इति श्रीपराशरभट्टाचार्य प्रणीता अष्टश्लोकी समाप्ता ।

॥ श्रीमते रामानुजाय नमः ॥



श्रीपराशर भट्टार्यः श्रीरंगेश पुरोहितः ।
श्रीवत्सांक सुतः श्रीमान् श्रेयसे मेऽस्तु भूयसे ॥

# अष्टश्लोकी

अकारार्थो विष्णुर्जगदुदय रक्षा प्रलयकृत्
मकारार्थो जीवस्तदुपकरणं वैष्णवमिदम् ।
उकारोऽनन्यार्हं नियमयति संबन्धमनयोः
त्रयीसारस्त्र्यात्मा प्रणव इममर्थं समदिशत् ॥

पदार्थ–

जगदुदय रक्षा प्रलयकृत्–जगत को सृष्टि स्थिति संहार गर्ने हुनु भयेको ।
विष्णुः–भगवान विष्णु ।
अकारार्थः–प्रणवमा रहेको अकारको अर्थ हो ।
जीवः–जीवात्मा ।
मकारार्थः–मकार को अर्थ हो ।
तत् इदम्–त्यो पहिले भनिएको यो जीवात्मा ।

**वैष्णवं उपकरणं**-भगवान को शेष वस्तु हो। यो लुप्त चतुर्थी को अर्थ हो।

**उकारः**-प्रणवको बीचमा रहेको उकार।

**अनयोः**-दुवै जीवात्मा र परमात्मा को।

**अनन्यार्हं सम्बन्धम्**-अनन्य अरुसंग हुन न सक्ने ऐकान्तिक नित्य सम्बन्ध लाई।

**नियमयति**-प्रतिपादन गर्दछ।

**इमम् अर्थम्**-यो अर्थ

**त्रयीसारः**-तीन वेद को साररूप हो।

**त्र्यात्मा**-तीन अक्षर र तीन पद भएको।

**प्रणव**-ओंकार ले।

**समदिशत्**-राम्रो प्रकारले निर्देश गरेको छ।

**तात्पर्य :-**

यो श्लोकमा प्रणव (ओंकार) को अर्थ भनिएको छ। मूलमन्त्र आठ अक्षर तथा तीन पदवालाछ। त्यसमा प्रणव पहिलो पद हो, यसमा अकार उकार मकार तीन अक्षर छन। अकार को अर्थ हो समस्त लोक हरु को सृष्टि स्थिति संहार गर्ने हुनुभएको भगवान विष्णु। मकार को अर्थ जीवात्मा हो। "तदुपकरणं वैष्णव मिदम्" यो कथनले अकारवाच्य भगवान को मकार वाच्य जीव शेष वस्तु हो भन्ने अर्थ लुप्त चतुर्थी विभक्ति



ले भनिएको छ। उकारले भगवान र जीवात्मा को अनन्यार्हं सम्बन्धलाइ बताउँदछ। यस्ता प्रकारले ऋग्वेद यजुर्वेद सामवेद यी तीनै वेदको साररूप भएको अकार उकार मकार यी तीन अक्षरले युक्त भएको प्रणवले यस्तो अर्थ राम्रो प्रकारले प्रतिपादन गरेको छ।

**लुप्त चतुर्थीः**-"राज पुरुष" भन्नाले राजा को मान्छे भन्ने अर्थ बुझिन्छ, सो अर्थ बुझ्न का निमित्त "को" यो विभक्ति को अर्थ राज पुरुष यो शब्द को बीचमा लगाइन्छ जसरी यहाँ षष्ठी विभक्ति लुकेर रहेको छ त्यस्तै अकारमा लुप्त चतुर्थी विभक्ति छ जसको अर्थ हुन्छ मकारवाच्य जीव अकार वाच्य भगवानको नै शेष वस्तु हो।

**अनन्यार्हं सम्बन्ध**-एक भगवान लाइ छोडेर अन्य कुनैको पनि योग्य न हुनु नै अनन्यार्हं संबन्ध हो। जीवात्मा र भगवान् को अनन्यार्हं सम्बन्ध छ।

"तदुपकरणं वैष्णवमिदम्" यो वाक्य द्वारा तीन प्रकारको (शुद्ध सत्त्व, मिश्र सत्त्व, सत्त्व शून्य) अचित् चेतनको कर्मानुरूप भोगको साधन हो यस्तो अचित्तत्व पनि भगवान को शेष वस्तु हो।

भगवती महालक्ष्मी भगवान सर्वेश्वर को स्वरूप निरूपिका हुनु भएकी हुनाले अकार वाच्य भगवान

भन्नाले लक्ष्मीजो पनि आउनु हुन्छ । भगवान को नित्य अनपायिनी हुनु भएकी हुनाले भगवान् विना एक्लै लक्ष्मीजी को स्थिति नै हुन सक्दैन ।

**मन्त्र ब्रह्मणि मध्यमेन नमसा पुंसः स्वरूपंगतिः,**
**गम्यंशिक्षितमीक्षितेन पुरतः पश्चादपि स्थानतः ।**
**स्वातन्त्र्यं निजरक्षणं समुचिता वृत्तिश्च नान्योचिता,**
**तस्यैवेति हरेर्विविच्य कथितं स्वस्यापिनार्हं ततः ॥२ ।**

पदार्थ–

**मन्त्र ब्रह्मणि**–यो श्रेष्ठ मूलमन्त्रमा
**मध्यमेननमसा**– बीचमा आएको नमः पदले
**पुरतः ईक्षितेन**–पहिले आएको प्रणव संग जोड़दा
**पुंसः स्वरूपं**–जीवात्मा का यथार्थ स्वरूपको
**शिक्षितम्**–शिक्षा दिइएको छ ।
**स्थानतः ईक्षितेन**–अबी पछीन जोड़ी आफ्नै स्थानमाहेर्दा
**गतिः शिक्षिता**–उपायको शिक्षा दिइएको छ ।
**पश्चादपि ईक्षितेन**–पछीको नारायण पद संग जोड़दा
**गम्यं शिक्षितम्**–परमपुरुषार्थ को शिक्षा दिइएको छ ।
**स्वातन्त्र्यं निजरक्षणम्**–स्वतन्त्रतार आफ्नो रक्षा गर्नु
**समुचिता वृत्तिश्च**–शेषत्व को अनुकूल कैंकर्य वृत्ति
**तस्य हरेः एव**–भगवानको नै योग्य छ ।
**अन्योचिता न**–भगवान देखि भिन्न अन्य कसैको उचित छैन



**इति विविच्य कथितं**–यस्तो विवेचनापूर्वक भनिएको छ ।
**ततः स्वस्य अपि अर्हं न**–त्यस कारण आफ्ना निमित्त पनि यी तीनै योग्य छैनन् ।

तात्पर्य–

यो श्लोकमा नमः पदको अर्थ प्रतिपादन गरिएको छ । प्रणव तथा नारायणाय को बीचमा नमः पद आएको छ । यो नमः पद सखण्ड तथा अखण्ड का भेदले दुइ प्रकार को हुन्छ । न र मः यी दुवैलाई अलग–अलग गर्दा सखण्ड नमः पद हुन्छ । पदच्छेद न गर्दा अखण्ड नमः पद हुन्छ पदच्छेद गर्दा मः को अर्थ हुन्छ मेरो जो स्वार्थपरक भावना को न यो पदले निषेध गर्दछ । यस प्रकार सखण्ड नमः पदले चेतन को स्वरूप उपाय तथा पुरुषार्थ को परिस्कार हुन्छ । यो नमः पद मूलमन्त्र को मध्यमा आएको हुनाले पहिले र पछी का पद संग संबन्ध छ । पहिलेको पद प्रणव संग यसलाइ जोड़दा ॐ नमः यस्तो हुन्छ जसको अर्थ होः–प्रणवले चेतनका स्वरूप को निर्धारण गरेको छ, शेषत्व नै चेतन को स्वरूप हो । अहंकार ममकार यसका विरोधी हुन । नमः पदले मेरो स्वरूप मेरो उपयोग का निमित्त होइन, चन्दन आदि भोग्य वस्तु को समान भगवान कै उपयोग का निमित्त हो । अखण्ड नमः पदलाइ जोड़दा नमो

नमः यस्तो पद हुन्छ, जसको अर्थ हुन्छ भगवान नै मेरो उज्जीवनका निमित्त उपाय हुनु हुन्छ। मैले आफ्नो रक्षा गर्नु तथा उपाय का निमित्त प्रयास गर्नु स्वरूप विरूद्ध हुन्छ। नमः पदलाइ नारायण पदमा जोड्दा नमो नारायणाय यस्तो हुन्छ, यसले उपेयको शोधन हुन्छ। जसको अभिप्राय हो मैले गरेको भगवान् को कैंकर्य आफ्नो प्रसन्नता का लागी न भएर भगवान कै प्रसन्नता का निमित्त हो। यस्ता प्रकारले स्वशेषत्वमेरो आत्मा मेरै उपयोग का निमित्त हो यस्ता बुद्धिको निराकरण हुंदा स्वरूप शुद्ध हुन्छ। उपायमा मेरो संबंध छैन यस्तो विचारले उपाय शुद्ध हुन्छ। फल प्रति स्वार्थ को परित्याग गर्नाले उपेय शुद्ध हुन्छ म स्वतन्त्र होइन भगवान को परतंत्र हूं। आफ्नो रक्षाका निमित्त प्रयास गर्नु मेरो काम होइन, यो त भगवान को काम हो। भगवान को कैंकर्य मा मेरो केही स्वार्थ छैन, भगवान के निमित्त कैंकर्य गर्दछु। यस प्रकार यो श्लोकमा नमः पदको अर्थ बताइएको छ।

**अकारार्थायैव स्वमहमथ मह्यं न निवहाः**
**नराणां नित्यानामयनमिति नारायणपदम्।**
**यमाहास्मै कालं सकलमपि सर्वत्र सकला-**
**स्ववस्थास्वाविस्स्युःमम सहजकैङ्कर्यविधयः ।३।।**



**पदार्थ-**

**अहम् अकारार्थाय एव**-म वाच्य जीवात्मा अकार वाच्य भगवान का निमित्त हो।

**अथ**-यस्तो स्वरूप भन्दा अतिरिक्त।

**अहं स्वम् मह्यं न**-म स्वयं आफ्ना निमित्त होईन, म मेरो उपयोग का लागि होइन।

**नारायण पदम्**-नारायण यो शब्द।

**नराणां नित्यानां निवहाः**-नित्य वस्तुहरुको समूहका।

**अयनम्**-आधार हुनु भयेको। नित्य वस्तु को समूह जसका आधार छन् भनेर नारायण शब्दले।

**यम् आह**-जुनभगवान लाइ भनिएको छ।

**अस्मै**-यस्ता भगवानका निमित्त।

**कालं सकलम्**-समस्त समयमा।

**सर्वत्र**-सबै देश हरुमा।

**सकलासु अवस्थासु**-सबै अवस्थामा।

**मम सहज कैंकर्य विधयः**-मेरा स्वाभाविक कैंकर्य हरु।

**आविः स्युः**-प्रकट होउन,-अविद्या कर्मरूपी प्रतिबन्धकहरू निवृत्त भयेर कैंकर्यात्मक अनुष्ठान प्राप्त होस।

तात्पर्य-

यो श्लोकमा प्रणव, नमः तथा नारायणाय यी तीनै

पदको प्रतिपाद्य अर्थ वताइएको छ । "अहं अकारार्थो यैव" यो पदले प्रणवको अर्थ भनिएको छ । "अहं मह्यंन" यस वाक्यले नमः पदको अर्थ भनिएको छ । निवहाः यो शब्द देखि यमाह यो शब्द सम्म नारायणाय यो पदको अर्थ भनिएको छ । नारायण पदको तत्पुरुष समास तथा वहुव्रीहि समास दुइ प्रकार व्युत्पत्ति हुन्छ । नाराः भनेर नाशनहुने वाला पदार्थ हरुलाई भनिन्छ । यी वस्तु हरुपनि दुई प्रकार का छन् स्वरूप ले नित्य र प्रवाहरूपले नित्य । स्वरूपले नित्य ज्ञानानन्द, वात्सल्य, सौलभ्य, दिव्यमहिषी, नित्य सूरिहरु स्वरूपले नित्य हुनुहुन्छ । जसको कहिल्यै पनि उत्पत्ति र विनाश हुंदैन त्यसलाई स्वरूपले नित्य भनिन्छ उत्पत्ति र विनाश हुंदापनि जो पहिले को नामरूप सहित प्रकट हुन्छन् तिनीहरू प्रवाह रूपले नित्य हुन् । महत्तत्व पंचमहाभूत आदि प्रवाह रूपले नित्य हुन् अयन शब्दको अर्थ आधार हो । भगवान उभय विभूतिका सवै वस्तु हरुको आधार हुनुहुन्छ । यस्तो अर्थ तत्पुरुष समास गर्दा अनुसन्धान गरिन्छ । वहुव्रीहि समास को अनुसार यो नारपदार्थ को समूह जसको आश्रय स्थान हो त्यसलाई नारायण भनिन्छ । उक्त दुवै प्रकार को समास द्वारा यो अर्थ सिद्ध हुन्छ कि–सवै वस्तु भगवानमानै छन् तथा भगवान



सवैमा हुनुहुन्छ । सवै वस्तु को वाहिर भित्र भगवान व्याप्त हुनुहुन्छ यस द्वारा भगवान को सौलभ्य सिद्ध हुन्छ । भगवान सवैका आधार हुनहुन्छ यस द्वारा भगवान को परत्व सिद्ध हुन्छ । "इण् गतौ" र "अय गतौ" धातु वाट सिद्ध हुने अयन शब्दले कर्म को व्युत्पत्ति र करणको व्युत्पत्ति गर्दा सिद्ध हुन्छ कि–भगवान नै उपाय उपेय अन्तर्यामी तथा सवै प्रकार का बन्धु हुनुहुन्छ । यस्तो नारायण शब्दको संक्षेपमा अर्थ हुन्छ। अस्मै कालं देखि यो श्लोकका अन्तिम शब्द सम्मका शब्द हरु द्वारा नारायण पदको अन्त्यमा आएको चतुर्थी विभक्ति "आय" को अर्थ बताएको छ । वेद वेदान्त प्रसिद्ध भगवान नारायणका निमित्त म सर्वदेश सवै समय र सवै अवस्थामा कैंकर्य गरौं, यही चतुर्थी विभक्ति को अभिप्राय हो ।। ३ ।।

**देहासक्तात्मबुद्धिर्यदि भवति पदं साधु विद्यात्तृतीयं**
**स्वातंत्र्यांधो यदिस्यात्प्रथममितरशेषत्वधीःचेद्** द्वितीयम्
**आत्मत्राणोन्मुखश्चेन्नमइतिचपदंबान्धवाभासलोलः**
**शव्दं नारायणाख्यं विषयचपलधीश्चेच्चतुर्थी प्रपन्नः ।।**

पदार्थ–

**देहासक्तात्मबुद्धिः यदि भवति**–शरीरमा अत्यन्त प्रेम हुनाले देहात्म भ्रम यदि हुन्छ भने ।

**तृतीयं पदं साधु विधात्**–प्रणवको तेस्रो पद मकारको अर्थ राम्रो प्रकारले अनुसन्धान गर्नु ।

**यदि स्वातन्त्र्यान्धः स्यात्**–आफुलाई स्वतन्त्र मानेर यदि अन्धो वनेको छ भने ।

**प्रथमं पदं विधात्**–पहिलो पद अकार (लुप्त चतुर्थी सहित) का अर्थ को अनुसन्धान गर्नु ।

**इतर शेषत्वधीः चेत्**–भगवान देखि अतिरिक्त अर्काको शेष हुं भन्ने बुद्धि हुन्छ भने ।

**द्वितीयं पदं विधात्**–प्रणवमा आएको दोस्रो पद उकार का अर्थको अनुसन्धान गर्नु ।

**आत्मत्राणोन्मुखश्चेत्**–आफ्नो रक्षा गर्न आफैं तयार हुन्छ भने ।

**नमः इति पदं विद्यात्**–नमः यो मध्यम पदका अर्थ को अनुसन्धान गर्नु ।

**बान्धवाभासलोलः**–बान्धवत्व को आभास मात्र भयेका शरीर संबन्धीमा आसक्ति हुन्छ भने ।

**नारायणाख्यं शदं विद्यात्**–नारायण पदको अर्थ राम्रो प्रकारले अनुसन्धान गर्नु ।

**विषय चपलधीः चेत्**–शब्दादि विषयमा बुद्धि आसक्त हुन्छ भने ।



**चतुर्थी विद्यात्**–नारायण शब्दमा आएको चतुर्थी विभक्ति आय यो पदका अर्थको अनुसन्धान गर्नु ।

**प्रपन्नः**–प्रपन्न अधिकारीले यस्ता प्रकार मूल मन्त्रमा प्रतिपादित अर्थको अनुसन्धान गर्नु ।

तात्पर्य–

मूल मन्त्रले शब्दशक्ति तथा अर्थशक्ति द्वारा चेतन को रक्षा गर्दछ । जपात्मक अनुष्ठान द्वारा फलप्राप्त गर्न चाहने उपासक हरुको रक्षा शब्द शक्तिले गर्दछ । अर्थ शक्तिले प्रपन्न हरुको रक्षा गर्दछ । यदि प्रपन्न भगवान का भक्तलाई देहात्म भ्रम हुन्छ भने प्रणवको तृतीय पद मकारका अर्थको अनुसन्धान गर्नु किनकि मकारले ज्ञानमय स्वरूप भएको आत्मालाई वताउँदछ, शरीर ता जड़ छ । यस मूलमन्त्र अर्थ शक्तिले प्रपन्न हरुका स्वरूप को रक्षा गर्दछ ।

आत्माको ज्ञान भएरपनि आत्मा स्वतन्त्रछ भन्ने यस्तो भ्रम हुन्छ भने लुप्त चतुर्थी सहित अकारको अर्थ अनुसन्धान गर्दा आत्मा परमात्माकै शेषहो भन्ने ज्ञान हुन्छ । परमात्माको शेष वस्तु का रूपमा आत्माहो भन्ने ज्ञान भएपछी अन्य देवतान्तरको पनि शेषहो कि? भन्ने भ्रम भएमा उकारका अर्थको अनुसन्धान गर्दा अनन्यार्ह शेषत्व रूप स्वरूपको ज्ञान हुन्छ, जसवाट

आत्मा भगवानको मात्र शेषहो तथा भगवानको संबंध द्वारा लक्ष्मीजी, आचार्य एवं भागवत हरुको शेष हो । यसरी अनन्यार्ह शेषत्व रूप स्वरूपको ज्ञान भएपनि म आफ्नो रक्षा गर्न स्वयं समर्थ छु भन्ने भावना हुन्छ भने नमः पदको अर्थ संझदा आफ्नो रक्षा गर्न म स्वयं समर्थ छैन भन्ने ज्ञान हुन्छ । यसरी मेरो रक्षा गर्ने भगवान हुनुहुन्छ भन्ने ज्ञान भएपछि यथार्थ बन्धु न भएपनि बन्धु–बान्धव जस्ता लाग्ने शरीर संवधी हरुमा आसक्ति हुन्छ भने नारायण पदको अर्थानुसन्धान गर्नु । नारायण शब्दका अयन पदको कर्मणि व्युत्पत्ति "ईयते असौ इति अयनम्" अनुसार भगवान लाइ नै उपेय रूपमा बताएको सिद्ध हुन्छ । यस प्रकार भगवान प्रति उपेयत्व सिद्ध हुंदा माता–पिता आदि सर्ववन्धुत्व सिद्ध हुनाले सांसरिक बन्धु वान्धव प्रति बान्धवाभास निवृत्त हुन्छ । यदि शब्दादि विषयमा आसक्ति हुन्छ भने नारायण शब्दमा आएको व्यक्त चतुर्थी विभक्ति "आय" को अर्थानुसन्धान गर्नु । म सर्व प्रकारको कैंकर्य भगवानका निमित्त गर्दछु भन्ने भावना मनमा सोचेर कैंकर्य गरिन्छभने शब्दादि विषयको अभिलाषा नै हुन सक्दैन ।

**नेतृत्वं नित्ययोगं समुचितगुणजातं तनुख्यापनं चो–**
**पायंकर्तव्यभागं त्वथ मिथुनपरं प्राप्यमेवं प्रसिद्धम् ।**



**स्वामित्वं प्रार्थनां च प्रबलतरविरोधिप्रहाणं दशैतान्**
**मन्तारं त्रायते चेत्यधिगतनिगमः षट्पदोऽयं द्विखण्डः ॥५॥**

पदार्थ–

नेतृत्वं–पुरुषकारत्व स्वरूप ।
नित्ययोग–एकक्षण पनि अलग न हुने नित्य संश्लेष ।
समुचित गुण जातं–आश्रयणोचित गुण समूह ।
तनुख्यापनं–दिव्यमंगल विग्रहको प्रकाश ।
उपायम्–भगवान लाइ प्राप्त गर्ने उपाय ।
कर्तव्य भागंतु–चेतनले गर्नेयोग्यअध्यवसाय ।
अथ–यस भन्दा अनन्तर ।
मिथुनपरं प्राप्यं–लक्ष्मीनारायणको कैंकर्य ।
स्वामित्वं–सर्व शेषित्व ।
प्रर्थनांच–भगवान संग कैंकर्य प्रार्थना ।
प्रबलतर विरोधिप्रहाणम्–अत्यंत विरोधी भएका तत्त्व हरुको नाश ।
अधिगत निगमः–वेद प्रतिपाद्य ।
द्विखण्डः, षट्पदः–दुई खण्ड र छ पद भएको ।
अयम् एतान्–द्वय मंत्रले यी दस अर्थको ।
मन्तारं त्रायते–मनन गर्नेलाइ रक्षा गर्दछ ।
एवं प्रसिद्धम्–यस्ता प्रकारले यसको अर्थ प्रसिद्ध छ ।

तात्पर्य–

द्वय मंत्रमा दश शब्द छन् । १– श्री, २– मत्, ३– नारायण, ४– चरणौ, ५– शरणं, ६– प्रपद्ये, ७– श्रीमते, ८– नारायण ९– आय १०– नमः । यी दश शब्द हरुको अर्थ यस प्रकार छ ।

१– श्री– श्रीशब्दको अर्थ हो लक्ष्मीजी । श्रीयते यो कर्मणि व्युत्पत्ति को अनुसार चेतनहरू द्वारा आश्रय गरिनु हुन्छ । श्रयते यस्तो कर्तरि व्युत्पत्तिको अर्थ हुन्छ लक्ष्मीजी चेतन हरूलाई स्वीकार गराउन भगवानको आश्रय गर्नु हुन्छ ।

२– नित्ययोगम्– यो श्रीशब्दमा आएको मतुप् प्रत्यय (मत्) को अर्थ हो । लक्ष्मीजी सधैं भगवान संग रहनु हुन्छ, एक क्षण पनि अलग हुनु हुन्न । भगवान स्वतंत्र हुनुहुन्छ । जीव हरूको अपराध असख्य छ । भगवानले कुनै समय जीव हरूको अपराध पटि ध्यान दिएर शरणागतको त्याग गर्नु हुन्छ कि भन्ने ड़रले सधैं साथमा रहनु हुन्छ ।

३– समुचित गुण जातम्– यो नारायण शब्दको अर्थ हो । यहाँ भगवानका वात्सल्य आदि गुणहरू प्रकरण अनुसार ग्रहण गरिन्छन । जीवात्माले आफ्नो पापहरु संझिएर न डराउन वात्सल्य गुण उपयोगी छ । मेरो रक्षारूपी कार्य गर्नुहुन्छ कि गर्नुहुन्न यस्तो शंका नगरीकन अवश्य नै रक्षा गर्नुहुन्छ यस प्रकार विश्वास ले निश्चय गर्नका निमित्त स्वामित्व गुण उपयोगी छ । जीवात्माको भगवानका साथमा स्व स्वामी भावले निरुपाधिक संबन्ध छ । आफ्नो न्यूनता र भगवानको परत्व लाई सोचेर पछी न हटनका निमित्त सौशील्य गुण उपयोगी छ । भगवान अतीन्द्रिय हुनु भएको हुनाले आँखाले देख्न सकिदैन भनेर उदासीन न हुनका निमित्त सौलभ्य गुण उपयोगी छ । भगवानको अर्चाविग्रह सबैं लाई सुलभ छ । चेतनका विरोधी लाई भगाएर पुरुषार्थ प्रदान गराउन ज्ञान र शक्ति उपयोगी छन् ।



४–तनुख्यापनम्–यो चरणौ शब्दको अर्थहो । "चरणौ" एक देशीय शब्दले भगवानको दिव्य मंगल विग्रह लाई ग्रहण गरिएको छ । स्तनन्धय बालकलाइ माताका स्तनको प्रमुखता भएझैं शरणागतका निमित्त भगवान का चरण कमल नै मुख्य रक्षक छन् ।

५– उपायम्–यो शरण शब्दको अर्थहो । अभीष्ट प्रदान गर्न तथा अनिष्ट निवारणका निमित्त श्रीमन्नारायण नै अमोघ उपाय हुनुहुन्छ ।

६–कर्तव्य भागम्–यो प्रपद्ये यस क्रिया पदको अर्थ हो । जसको अर्थ हुन्छ आश्रय गर्दछु । शरणागति मन,

वचन, कर्म, द्वारा तीन प्रकारको मात्रै भयेपनि फल प्राप्ति हुन सक्छ । तीन मध्ये मानसिक नै मुख्य हो । "तत्व ज्ञानान्मुक्तिः" यो कथनानुसार ज्ञान नै मोक्षको साधन हो । भगवानले अवश्यनै मोक्ष दिनुहुन्छ यस्तो दृढ़ विश्वास नै प्रपद्ये पदको अर्थहो ।

७-मिथुन परं प्राप्यम्-यो श्रीमते पदको अर्थ हो । लक्ष्मी नारायण दुबैको कैंकर्य गर्नु नै पुरुषार्थ हो । पूर्व खण्डमा श्रीशब्द पुरुषकारलाई भनिएको थियो यहाँ उत्तरखण्डमा कैंकर्य प्रति संवन्धिनी को रूपमा भनिएको छ ।

८-स्वामित्वम्-यो नारायण पदको अर्थहो । उभय विभूति नायक भगवान नारायणको कैंकर्य नै चेतन को स्वरूपानुरूप कर्तव्यहो । संबन्धात्मक कैंकर्य स्वरूपानुरूप तथा आनन्द प्रदान गर्नेवाला हुन्छ । नौ प्रकारका संबंध हरु मध्ये स्वस्वामी संबन्धले चेतन मा दासत्व, भगवान मा स्वामित्व छ । अतः सेवा नै स्वरूपानुरूप तथा आनन्दमय हो ।

९-प्रार्थनाम्-यो नारायण पदमा रहेको चतुर्थी विभक्ति को अर्थ हो । प्रपन्न द्वारा स्वीकार गरिएका उपायको फल रूपमा सर्वदेश सर्वकाल सर्वावस्थोचित सकलविध कैंकर्य लाई यो पदद्वारा भनिएको छ ।



१०-प्रबलतर विरोधिप्रहाणम्-यो नमः पदको अर्थहो । मूल मन्त्रको मध्यमा आएको नमःले स्वरूप विरोधी, तथा पुरुषार्थ विरोधी को निवारण गर्दछ । यहाँ कैंकर्य प्रकरण हुनाले नमः पदले कैंकर्य विरोधी को निवारण गर्दछ । कैंकर्य लाइ भोग र आफुलाइ भोक्ता सझनु कैंकर्य विरोधी हो । "यो कैंकर्य भगवान का मुखोल्लासको कारण हुनाले आदर योग्य छ" यस्तो ज्ञान नभई अहंकार र ममकार को परवश भई गरिएको कैंकर्य कहिल्यैपनि पुरुषार्थ रूप हुन सक्दैन । यो नै यहाँ प्रबलतर विरोधी भनेर भनिएकोछ त्यसको प्रहाण निवारण नमः पदले निर्देश गरेको छ ।

यी द्वय मंत्रका दश अर्थ हुन् । मनन गर्ने वाला प्रपन्न जनहरु को शब्द शक्ति तथा अर्थ शक्ति द्वारा जसले रक्षा गर्दछ त्यस लाई मंत्र भनिन्छ । दुई खण्ड भएको यो द्वय मन्त्र मा छः पद छन् । पूर्व खण्डमा तीन पद तथा उत्तर खण्डमा तीन पद छन् ।

१-श्रीमन्नारायण चरणौ २-शरणं ३-प्रपद्ये ४- श्रीमते ५- नारायणाय ६- नमः ॥ ५ ॥

**ईशानां जगतामधीशदयितां नित्यानपायां श्रियम्**
**संश्रित्याश्रयणोचिताखिलगुणस्याङ्घ्रौ हरेराश्रये ।**

**इष्टोपायतया श्रिया च सहितायात्मेश्वरायार्थये**
**कर्तुं दास्यमशेषमप्रतिहतं नित्यं त्वहं निर्ममः ।।६।।**

पदार्थ

**जगतां ईशानाम्**-समस्त लोक हरुकी नियंत्री हुनुभएकी
**अधीश दयिताम्**-भगवान को प्राण वल्लभा
**नित्यानपायाम्**-भगवान संगकहिल्यैपनि अलग न हुने भएकी ।
**श्रियं संश्रित्य**-लक्ष्मीजी को आश्रयण गरेर ।
**आश्रयणोचित अखिल गुणस्य**-आश्रय गर्ने योग्य समस्त गुण-गणले परिपूर्ण हुनु भएका ।
**हरेः अंघ्री**-भगवान का चरणारविन्दको ।
**इष्टोपायतया आश्रये**-इष्ट साधन रूपले आश्रय गर्दछु ।
**श्रिया च सहिताय**-लक्ष्मीजी सहित हुनु भएका ।
**आत्मेश्वराय**-सर्वशेषी भगवान नारायणका लागी ।
**निर्ममः** अहतु-ममकार बुद्धिले रहित भएको म ।
**अशेष दास्यम्**-सर्व प्रकारको कैंकर्य ।
**अप्रतिहतम्**-निर्विघ्न रूपले ।
**नित्यं कर्तुम्**-सधैं गर्नका निमित्त ।
**अर्थये**-प्रार्थना गर्दछु ।

तात्पर्य

द्वय मंत्रको पूर्व खण्डमा लक्ष्मीजी को पुरुषकार



द्वारा भगवान लाइ वरण गरिएको छ। उत्तर खण्डमा लक्ष्मीजी तथा भगवान दुवैका लागी कैंकर्य प्राप्तिको प्रार्थना गरिएको छ। पुरुषकार गर्ने वालामा दुई कुरा हुनु पर्दछ-पहिलो-जसका लागी पुरुषकार गरिन्छ तिनीमा धेरै प्रेम हुनु तथा दोस्रो जो संग पुरुषकार गरिन्छ उ संग आफ्नो प्रगाढ़ प्रेमका साथै विशेष प्रभाव होस जसले गरिएको पुरुषकार व्यर्थ न होस। लक्ष्मीजी जगतकी ईश्वरी तथा माता हुनु भएकी हुनाले चेतन हरुको दुःख सहन सक्नु हुन्न तथा भगवान लाइ प्राण भन्दापनि प्रियतमा हुनुहुन्छ। स्वयं भगवानले पनि लक्ष्मीजीको विषयमा "नजीवेयं क्षणमपि" भनेर भनिवक्सिएको छ। परकाल स्वामीजीले "भगवान पुष्प पुत्रिका का विषयमा अत्यन्त मोहित हुनुहुन्छ" भनेर वर्णन गर्नु भएको छ। लक्ष्मीजी विष्णुपत्नी हुनुभएकी हुनाले वहाँको पुरुषकार कहिल्यै निष्फल हुंदैन। पुरुष-कार गरिदिने वाला नजीकै भएमात्र शरणागति हुन्छ भन्ने समयको प्रतीक्षा गरी रहनुपर्दैन किनकि लक्ष्मीजी ता भगवानकी नित्यानपायिनी हुनुहुन्छ। एक क्षणपनि भगवान देखि अलग न हुने हुनाले लक्ष्मीजी कुनै समय भगवानले जीवात्माको अपराध विचार गरेर जीवात्मा प्रतिक्रोध गर्दा पनि स्वयं भगवानको क्रोध शमन गराउनु

हुन्छ तथा लक्ष्मीजी अपराधीहरुप्रति पनि क्रोध गर्नु हुन्न लंकाको अशोक वाटिका की राक्षसी हरु तथा जयन्त प्रति दयानै यसका दृष्टान्त हुन्। इत्यादि कारणले लक्ष्मीजी को शरणागतिका निमित्त कसैका पुरुषकारको आवश्यकता छैन किन्तु भगवानको शरण का निमित्त लक्ष्मीजी का पुरूषकारको नितान्त आवश्यकता छ। लक्ष्मीजी को पुरूषकार द्वारा वात्सल्यादि गुणले परिपूर्ण हुनु भएका भगवान को शरणमा गएर स्वशेषत्वानुरूप लक्ष्मी सहित भगवानको सर्वदेश सर्व काल सर्वावस्थोचित कैंकर्य प्रार्थना गरी प्राप्त गर्नु पर्दछ। लक्ष्मीजीले चेतनको कैंकर्य दस गुना बढ़ाएर भगवान लाइ निवेदन गर्नु हुन्छ ॥ ६ ॥

**मत्प्राप्त्यर्थतया मयोक्तमखिलं संत्यज्य धर्मं पुन-**
**र्मामेकं मदवाप्तये शरणमित्यार्तोऽवसायं कुरु।**
**त्वामेवं व्यवसाययुक्तमखिलज्ञानादिपूर्णो ह्यहं**
**मत्प्राप्तिप्रतिबन्धकैर्विरहितं कुर्यां शुचं मा कृथाः ॥**

पदार्थ-

**मत्प्राप्ति अर्थतया**-मलाइ प्राप्त गर्न उपाय रूपले।
**मया उक्तम्**-म द्वारा भनिएका।
**अखिलं धर्मं सन्त्यज्य**-सबै धर्मलाइ छोडेर।
**माम् एकं पुनः**-एक मात्र मेरै विषयमा।
**आर्तः मदवाप्तये**-आर्त भयेर मलाइ प्राप्त गर्न।



**शरणं इति**-म नै उपाय हूं यस्ता प्रकारले।
**अवसायं कुरु**-दृढ़ विस्वास गर।
**एवंव्यवसाययुक्तं त्वाम्**-यस्तो निश्चयले युक्त भयेको तिमिलाई।
**ज्ञानादिपूर्णः अहं**-ज्ञान आदि गुणले पूर्ण म।
**मत्प्राप्ति प्रतिबन्धकैः**-मलाइ प्राप्त गर्ने विघ्नहरु द्वारा।
**विरहितं कुर्याम्**-छोडाइ दिनेछु।
**शुच मा कृथाः**-शोक न गर।

तात्पर्य-

यो श्लोक तथा अगाड़ी आउने आठौं श्लोकमा चरम श्लोकको अर्थ भनिएको छ। पहिले कर्म ज्ञान आदि अनेकौं उपाय हरु भगवानले भनिवक्सिएको थियो किन्तु ती सबै उपाय शेषत्व स्वरूपका विरुद्ध र कठिन भएका हुनाले अर्जुन शोक गर्नलागे पछी स्वरूपानुरूप तथा सजिलो उपायलाइ भगवानले भनिवक्सिएको हो।

यो श्लोकको पहिलो चरणमा चरम श्लोकको प्रथम चरणको अर्थ भनिएको छ। कुनै एक फलको साधन(उपाय) लाई धर्म भनिन्छ। यहाँ मोक्षको प्रकरण भएका हुनाले धर्मशब्द ऐहिक अथवा स्वर्गादि क्षुद्र फलको साधन होइन। यहाँ त भगवत्प्राप्ति रूप मोक्ष फलको साधनहो। यो भन्दा पहिले भगवानले अरु उपायहरु भनेर शोकग्रस्त

अर्जुनलाई प्रपत्ति मार्गको उपदेश दिनुभएको हो। उपायान्तर लाइ छोडेर प्रपत्ति मार्गको अवलम्बन गर्नु पर्दछ। सीपीमा चाँदीको भ्रम हुने वाला व्यक्तिलाई यथार्थ ज्ञान भये पछी पश्चाताप भएझैं "मैले अनुपायमा उपाय बुद्धि गरें" यस्तो पश्चातापका साथ उपायान्तर लाई छोड्नु पर्दछ। "आर्तोऽवसायंकुरु" यो पदको आर्त शब्दले यस्तो अभिप्राय सिद्ध हुन्छ।

यसरी सर्वज्ञ परमात्माले "मया उक्तम्" भनेर भनिबक्सिएको छ। उपायान्तरको अलिकति पनि सम्बन्ध भएमा त्यो उपाय सहायक न भयेर प्रतिबन्धक हुन्छ। यो विषयमा एक दृष्टान्त छ। एक पल्ट रावण भगवान राम संग युद्ध गर्दा भगवानका वाणले अत्यन्त पीड़ित भयेर वाण न छोड़ी हातमा धनुष लियेर निश्चेष्ट उभिइ रह्यो, यो अवस्थामा पनि भगवान रामले वाण प्रहार गरी रहनु भयेको थियो। रावणले मनमा सोच्न लाग्यो—"मैले वाण छोड़ेको छैन किन रामले म माथि वाण वर्षा गरी रहेको हो ? मैले हाथ मा धनुष लिएको छु अवश्यपनि यसैकारणले हो" यस्तो सोचेर रावणले धनुष फ्याँकी दियो त्यो देखेर भगवान ले वाण प्रहार गर्न छोडेर "गच्छानुजानामि" म आदेश दिन्छु अव जा भनेर रावणलाइ भन्नुभयो। यो उदाहरण द्वारा यो जानिन्छ कि रावणले युद्ध गर्न छोड्दा पनि



हातमा धनुष लिएको हुंदा भगवानले वाण प्रहार गर्न छोड्नु भएन। रावणको धनुष उसको सहायक न भयेर बाधक सिद्ध भयो। यस्तै प्रकार सिद्ध साधन निष्ठ प्रपन्न लाइ उपायान्तरको अलिकति पनि संबन्ध भएमा शरणागति व्यर्थ हुन्छ। चरमश्लोकमा आएको "माम्" शब्द द्वारा भगवानले भन्नु भएको छ कि—अवतार लिएर चक्षु गोचर हुने वात्सल्य सौलभ्य आदि गुणले पूर्ण मेरै शरणमा आउ। धेरै टाढ़ा भएको हुनाले नजीकै गएर देख्न न सकिने, पर व्यूह तथा विलक्षण विग्रहले युक्त न भएका इन्द्र आदि देवताहरुको अन्तर्यामीका शरणमा न जाउ।

"एकम्" शब्द द्वारा भनिएको छ कि शरणागति उपाय होइन। यो शरणागति त सृष्टि तथा अवतार द्वारा गरिएको भगवानका कृषि (खेती) को फल हो। यदि हामीले शरणागति लाइ उपाय मान्दछौं भने भगवानको निरपेक्षोपायत्व भंग हुन्छ। त्यसैकारण भगवानले "शरणागत भए पछी सर्वज्ञ सर्वशक्ति तथा सर्वस्वामी भयेको म तिमीलाइ प्राप्ति प्रतिबन्धक भयेका सबै पाप हरु देखि छुड़ाइ दिन्छु" भनेर भनिबक्सिएको हो। जसरी सूर्योदय भएपछी अंध्यारो आफै हराउदछ, राजा संग मित्रता भये पछी शत्रु आफैं डराउँदछन्। त्यस्तै चेतनका पाप आफैं डरायेर भाग्दछन्। यस

कारण भगवान जीवात्मा लाई आश्वस्त गर्दै भन्नुहुन्छ रक्षारूपी कार्य म आफ्नो काम संझेर गर्नेछु किनकि तिम्रो र मेरो स्व-स्वामीरूप सम्बन्ध छ। तिम्रो अभीष्ट प्राप्ति र अनिष्ट निवारण गराउनु मेरो काम हो। अल्पज्ञ तथा असक्त भयेको तिम्रो काम होइन। स्वरूप विरूद्ध तथा कष्ट साध्य भएका उपायान्तर लाई छोड्न तथा स्वरूपानुरूप एवं विघ्न रहित सिद्ध साधन लाई ग्रहण गर। हे अर्जुन ! तिमिले शोक न गर यहाँ भगवत्प्राप्ति न भनेर प्रतिबन्धको निवारण मात्र भनिएको कारण यो हो कि प्रतिबन्ध हटे पछी फलप्राप्ति स्वयं सिद्ध छ। अतः अलग रूपले न भनियेको हो ॥ ७ ॥

**निश्चित्य त्वदधीनतां मयि सदा कर्माद्युपायान् हरे:**
**कर्तुं त्यक्तुमपि प्रपत्तुमनलं सीदामि दु:खाकुल:।**
**एतज्ज्ञानमुपेयुषो मम पुन: सर्वापराधक्षयं**
**कर्तासीति दृढोऽस्मि ते तु चरमं वाक्यं स्मरन् सारथे:॥८**

पदार्थ-

**हे हरे: मयि सदा**-हे भगवान् मेरा प्रवृत्तिहरु सधैं।
**त्वत् अधीनतां निश्चित्य**-तपाईंकै अधीनमा छन् भन्ने यस्तो निश्चय गरेर।
**कर्मादि उपायान्**-कर्मयोग आदि उपाय हरुलाई।
**कर्तुं त्यक्तुं अपि**-स्वीकार गर्न र परित्याग गर्न पनि।



**प्रपत्तुं अनलम्**-प्रपत्ति गर्न पनि असमर्थ भएर।
**दु:खाकुल: सीदामि**-दु:खले अत्यन्त व्याकुल भएको छु।
**सारथे: ते**-पार्थसारथि हुनु भएका हजूर को।
**चरमं वाक्यं स्मरन्**-अन्तिम वाक्यलाइ संझदै।
**एतद् ज्ञानम्**-भगवानले उपाय भन्ने ज्ञान लाई।
**उपेयुष: मम**-प्राप्त गर्ने वाला मेरा।
**सर्वापराधक्षयम्**-सबै पाप हरुको विनाश।
**कर्ता असि इति**-गर्ने वाला हजुर हुनुहुन्छ भनेर।
**दृढ: अस्मि**-निश्चिन्त भएको छु।

तात्पर्य-

पहिलो श्लोकमा चरम श्लोकको अर्थ पूर्ण रूपमा प्रतिपादन न भएको हुनाले यस श्लोकमा आजीवन निश्चिन्तताको अनुसन्धान गर्नु पर्दछ भनेर भनियेको छ।

हे भगवन् ? परतन्त्ररूप भयेका स्वस्वरूपको अनुसन्धान गर्दा मलाई यो ज्ञान भएको छ कि शास्त्रमा भनिएका कर्म ज्ञान आदि उपाय हरु मेरो स्वरूपका विरूद्ध छन्। कर्म ज्ञान आदि उपाय स्वप्रयत्न द्वारा सिद्ध हुन्छन्, प्रपत्ति मार्गमा रहेको, सिद्धसाधन निष्ठ मेरा निमित्त साध्य साधन भयेका कर्म ज्ञान आदि उपाय हरु स्वरूप विरूद्ध छन्। त्यसकारण "कर्माद्युपायान् कर्तुमनल" स्वरूप विरूद्ध भयेका तथा काठिन्य दोष दूषित कर्म ज्ञान आदि उपाय हरुको

अनुष्ठान गर्न सक्दिन । "त्यक्तुमपि अनलम्" वर्णाश्रमोचित तथा शास्त्र प्रतिपादित कर्म हरुको परित्याग गर्न पनि सक्दिन । "प्रपत्तुमपि अनलम्" सजिलो स्वरूपानुरूप निरपेक्षत्व आदि गुणले युक्त भयेको प्रपत्ति (शरणागति) पनि सर्व धर्म परित्याग, अकिंचनता तथा दृढ़ विश्वास का अभावले गर्न सक्दिन । यस कारण शोकाकुल भयेर अत्यन्त व्यथित छु । "सारथेः ते चरमं वाक्यं स्मरन्" अर्जुनका सारथी हुनुभयेको हे भगवन् ? हजुरले भनी बक्सियेका चरम श्लोकको अनुसन्धान गर्दै (भगवानका कृपाले भगवान नै उपाय हुनुहुन्छ भन्ने दृढ़ विश्वास प्राप्त गरेको म अज्ञ अशक्त का अविद्या कर्मवासना रुचि प्रकृति सम्बन्धी सबै पाप हरु भगवानले नै नाश गरिदिनु हुन्छ भनेर विश्वास ले) "दृढोऽस्मि" शोकको परित्याग गरेर निश्चिन्त भयेको छु ।

यो श्लोकको पूर्वार्धमा "सीदामि" भनियो उत्तरार्धमा "दृढ़ोऽस्मि" भनियो यसको अभिप्राय यो हो कि आफुलाइ हेर्दा शोक हुन्छ, भगवानका गुणहरु लाई संझदा निश्चिन्तता आउँछ । यस प्रकार चेतनले शरीर रहुन्जेल सम्म भगवानमा निर्भरभयेर यस्तो अनुसन्धान गर्नु पर्दछ ॥ ८ ॥

॥ इति ॥

